पाँच बुँदे पत्र र कार्तिक २२ गते सम्पन्न शीर्ष नेताहरुको बैठकका निर्णयहरु अनुरुप निम्न कामहरु गर्ने -

**माओवादी सेनाको सम्बन्धमा -**

४.१. २०६३ साल साउन २४ गते नेपाल सरकार र ने.क.पा.(माओवादी) को तर्फबाट संयुक्त राष्ट्र संघलाई पठाइएको पत्रमा व्यक्त प्रतिवद्धता अनुसार माओवादी सेनाका लडाकुहरु (Combatants) निम्न लिखित स्थानहरुमा अस्थायी शिविरहरु (Cantonments) मा सीमित रहने । संयुक्त राष्ट्र संघद्वारा उनीहरुको प्रमाणीकरण र अनुगमन गर्ने ।

मुख्य शिविरहरु निम्न स्थानहरुमा रहनेछन् :-

१. कैलाली २. सुर्खेत ३. रोल्पा ४. नवलपरासी ५. चितवन

६. सिन्धुली ७. इलाम

मुख्य शिविरहरु वरिपरि ३/३ वटाका दरले सहायक शिविरहरु रहनेछन् ।

४.२. माओवादी सेनाका लडाकुहरु शिविरमा रहेपछि शिविरको सुरक्षार्थ चाहिने हातहतियार र गोलीगठ्ठा वाहेक अन्य सवै हतियारहरु शिविर भित्रै सुरक्षित भण्डारण गर्ने र एकल ताल्चा लगाई चावी सम्बन्धित पक्षले नै राख्ने । सो ताल्चा लगाउने प्रक्रियामा संयुक्त राष्ट्र संघको निगरानीका लागि उसको रेकर्ड, साइरन सहितको संयन्त्र (Device) सम्मिलित गर्ने । भण्डारण गरिएका हातहतियारहरुको आवश्यक जाँच गर्नु पर्दा संयुक्त राष्ट्र संघले सम्बन्धित पक्षको रोहवरमा गर्ने । क्यामरा अनुगमन लगायत यस सम्बन्धका अन्य विस्तृत प्राविधिक विवरण संयुक्त राष्ट्र संघ, ने.क.पा. (माओवादी) र नेपाल सरकारका सहमतिले तयार गर्ने ।

४.३. माओवादी सेनाका लडाकुहरु अस्थायी शिविरमा बसिसकेपछि उनीहरुको रसदपानी लगायत अन्य आवश्यक व्यवस्था नेपाल सरकारले गर्ने ।

४.४ माओवादी सेनाका लडाकुहरुको रेखदेख, समायोजन र पुनर्स्थापना निम्ति अन्तरिम मन्त्रिपरिषद्ले विशेष कमिटी बनाएर काम गर्ने ।

४.५ माओवादी नेताहरुको सुरक्षा व्यवस्था सरकारसँगको सहमतिले गर्ने ।

नेपाली सेनाको सम्बन्धमा -

४.६ संयुक्त राष्ट्र संघलाई प्रेषित पत्रमा व्यक्त प्रतिवद्धता अनुसार नेपाली सेना ब्यारेकभित्र सीमित रहने । उसका हतियारहरु कसैको पनि पक्ष या विपक्षमा प्रयोग नहुने कुराको

प्रत्याभूति गर्ने । माओवादी सेनाका तर्फबाट भण्डारण भएका हतियारको बराबरी संख्यामा नेपाली सेनाले पनि आफ्ना हतियारहरु सुरक्षित भण्डारण गर्ने र एकल ताल्चा लगाई चावी सम्वन्धित पक्षले नै राख्ने । सो ताल्चा लगाउने प्रक्रियामा संयुक्त राष्ट्र संघको निगरानीको लागि उसको रेकर्ड, साइरन सहितको संयन्त्र (Device) सम्मिलित गर्ने । भण्डारण गरिएका हातहतियारहरुको आवश्यक जाँच गर्नु पर्दा संयुक्त राष्ट्र संघले सम्बन्धित पक्षको रोहवरमा गर्ने । क्यामरा अनुगमन लगायत यस सम्बन्धका अन्य विस्तृत प्राविधिक विवरण संयुक्त राष्ट्र संघ, नेपाल सरकार र ने.क.पा.(माओवादी) को सहमतिले तयार गर्ने ।

४.७. नेपाली सेनाको नियन्त्रण, परिचालन र व्यवस्थापन नयाँ सैनिक ऐन बमोजिम मन्त्रिपरिषद्ले गर्ने । अन्तरिम मन्त्रिपरिषद्ले राजनीतिक सहमति र अन्तरिम व्यवस्थापिकाको सम्बन्धित समितिसमेतको सुझाव लिएर नेपाली सेनाको लोकतान्त्रिकरणको विस्तृत कार्ययोजना तर्जुमा र कार्यान्वयन गर्ने । यस अन्तर्गत नेपाली सेनाको उपयुक्त संख्या, लोकतान्त्रिक संरचना, राष्ट्रिय र समावेशी चरित्र निर्माण गर्दै लोकतन्त्र र मानवअधिकारको मूल्यद्वारा सेनालाई प्रशिक्षित गर्ने लगायतका कामहरु गर्ने ।

४.८ नेपाली सेनाले गर्दै आएका सीमा सुरक्षा, आरक्ष, निकुञ्ज, बैंक, विमानस्थल, विद्युतगृह, टेलिफोन टावर, केन्द्रीय सचिवालय, विशिष्ट व्यक्तिहरुको सुरक्षा लगायतका कामहरुलाई निरन्तता दिने ।

## ५. <u>युद्धविराम</u> :

### ५.१ <u>सैन्य कारवाही र सशस्त्र परिचालनको अन्त्य</u> :

५.१.१. दुवै पक्ष देहायमा उल्लिखित कार्य नगर्ने प्रतिवद्धता व्यक्त गर्दछन् :-

क) प्रत्यक्ष वा अप्रत्यक्षरुपमा एक अर्कोप्रति लक्षित कुनै पनि किसिमको हात हतियारको प्रयोग वा आक्रमण गर्ने कार्य,

ख) दुवै पक्षको सहमतिले हातहतियार भण्डारण गरिएको स्थानमा हातहतियारसहित या रहितरुपमा अर्को पक्षको हातहतियार खानतलासी वा वरामदी गर्ने कार्य,

ग) कुनै व्यक्तिलाई नोक्सानी गर्ने वा मानसिक दवाव पुऱ्याउने कार्य,

घ) एक अर्कालाई लक्षित गरी धराप (एम्बुस) थाप्ने कार्य,

ङ) हत्या तथा हिंसात्मक कारवाहीहरु

च) अपहरण/पक्राउ/ थुनछेक/बेपत्ता पार्ने कार्य

छ) सार्वजनिक/निजी/सरकारी वा सैनिक सम्पत्ति नोक्सानी,

ज) हवाई आक्रमण वा बम्बारी,

झ) जमिन मुनी बारुद विछ्याउने कार्य (माइनिङ्ग) र विध्वंसात्मक कार्य (स्यावोटेज),

ञ) एक अर्काको सैनिक गतिविधिको सुराकी गर्ने कार्य ।

५.१.२ दुवै पक्षले थप सैन्य भर्ती गर्ने छैनन् र हातहतियार, गोलीगठ्ठा तथा विष्फोटक पदार्थ ओसार पसार वा एक अर्का विरुद्ध सैनिक हर्कत गर्ने छैनन् ।

तर, अन्तर्राष्ट्रिय सीमा र भन्सार विन्दुमा हात हतियार, विष्फोटक पदार्थ वा त्यसको अंश वा कच्चा पदार्थ जस्ता सामानहरु गैरकानूनी रुपमा ओसार पसार गर्ने कार्य रोक्ने सम्बन्धमा अन्तरिम सरकारले सुरक्षा निकाय परिचालन गरी गस्ती गर्न, खानतलासी गर्न वा वरामदी गर्न सक्नेछ ।

५.१.३ कुनै पनि व्यक्ति वा समूह अवैध हात हतियार, गोलीगठ्ठा र विष्फोटक पदार्थ साथमा लिई आवतजावत गर्ने छैनन् ।

५.१.४ दुवै पक्ष युद्धको समयमा प्रयोग गरिएका धराप तथा बारुदी सुरुङ्गहरुको रेखाङ्कन, भण्डारण ३० दिनभित्र एक अर्कालाई जानकारी दिन र ६० दिनभित्र निष्कृय र निर्मूल गर्न एक अर्कालाई सहयोग गर्नेछन् ।

५.१.५ कुनै पनि नागरिक सभा वा राजनैतिक सभा वा सार्वजनिक कार्यक्रममा दुवै पक्षका सेना हतियार वा कम्व्याट पोशाकसहित उपस्थित हुने छैनन् ।

५.१.६ नेपाल प्रहरी र सशस्त्र प्रहरीले जनआन्दोलन र शान्ति सम्झौताको मर्म र भावना अनुरुप तथा प्रचलित कानूनबमोजिम कानून व्यवस्था र शान्ति सुव्यवस्था एवं अपराध अनुसन्धानको कार्य चालु राख्नेछ ।

५.१.७ एक पक्षका सशस्त्र व्यक्तिले अर्को पक्षका सशस्त्र व्यक्तिलाई 'शत्रु' भनी सम्बोधन गर्न र व्यवहार गर्न समेत रोक लगाउने गरी आ-आफ्ना सशस्त्र निकाय र व्यक्तिलाई परिपत्र गर्नेछन् ।

५.१.८ सशस्त्र द्वन्द्वको क्रममा कब्जा गरिएका, ताला लगाइएका वा प्रयोग गर्न नदिइएका सरकारी, सार्वजनिक, निजी भवन, जमिन तथा अन्य सम्पत्तिहरु लगत खडा गरी तत्काल फिर्ता गर्न दुवै पक्ष सहमति व्यक्त गर्दछन् ।

५.२ स्थिति सामान्यीकरणका उपायहरुः

५.२.१ इच्छा विपरीत तथा प्रचलित कानुन प्रतिकूल नगद तथा जिन्सी संकलन र कर असूली गर्न पाइने छैन ।

५.२.२ आफ्ना कब्जामा रहेका मानिसहरुको बारेमा जानकारी सार्वजनिक गरी १५ दिनभित्र सबैलाई मुक्त गर्न दुवै पक्ष मञ्जुर गर्दछन् ।

५.२.३ दुवै पक्षद्वारा वेपत्ता पारिएका व्यक्तिहरुको तथा युद्धको समयमा मारिएकाहरुको वास्तविक नाम,थर र घरको ठेगाना सम्झौता भएको मितिले ६० दिनभित्र सूचनाहरु सार्वजनिक गरी परिवारजनलाई समेत जानकारी उपलब्ध गराउन मञ्जुर गर्दछन् ।

५.२.४ दुवै पक्ष सशस्त्र द्वन्द्वबाट उत्पन्न विषम परिस्थितिलाई सामान्यीकरण गर्दै समाजमा शान्ति कायम गराउन तथा युद्धबाट पीडित र विस्थापित व्यक्तिहरुको लागि राहत कार्य र पुनर्स्थापन गराउन राष्ट्रिय शान्ति तथा पुनर्स्थापन आयोग गठन गर्न र त्यसमार्फत् यससम्बन्धी काम अगाडि बढाउन सहमत छन् ।

५.२.५ दुवै पक्ष सशस्त्र द्वन्द्वका क्रममा मानव अधिकारको गंभीर उल्लंघन गर्ने तथा मानवता विरुद्धको अपराधमा संलग्नहरुको बारेमा सत्य अन्वेषण गर्न र समाजमा मेलमिलापको वातावरण निर्माण गर्न आपसी सहमतिबाट उच्चस्तरीय सत्य निरुपण तथा मेलमिलाप आयोगको गठन गर्न सहमत छन् ।

५.२.६ दुवै पक्ष नेपाली समाजमा लोकतन्त्र, शान्ति र अग्रगामी परिवर्तन सुनिश्चित गर्ने प्रतिवद्धताकासाथ देशमा विद्यमान सबै स्वरुपका युद्ध, आक्रमण, प्रत्याक्रमण, हिंसा र प्रतिहिंसा परित्याग गर्ने प्रतिज्ञा गर्दछन् । शान्ति स्थापना र शान्ति सुरक्षाको व्यवस्थामा दुवै पक्षले एक अर्कालाई सहयोग गर्ने कुरामा सहमति रहेको छ ।

५.२.७ दुवै पक्ष विभिन्न व्यक्तिहरुलाई राजनीतिक कारणले लगाइएका आरोप, दावी, उजुरी र विचाराधीन रहेका मुद्दामामिला फिर्ता लिन र थुनामा राखिएका बन्दीहरुको स्थिति तत्कालै सार्वजनिक गरी तुरुन्त रिहा गरिने ग्यारेन्टी गर्दछन् ।

५.२.८ दुवै पक्ष सशस्त्र द्वन्द्वको क्रममा विस्थापित व्यक्तिहरुलाई राजनीतिक पूर्वाग्रह बिना स्वेच्छाले आ-आफ्नो पैतृक वा पूर्व बसोबासको स्थानमा फर्कन दिन, युद्धका

कारणले नष्ट भएका पूर्वाधारहरु पुनर्निर्माण गर्न र विस्थापित व्यक्तिहरुलाई ससम्मान पुर्नस्थापना तथा सामाजीकरण गर्न प्रतिवद्धता व्यक्त गर्दछन् ।

५.२.९ उपरोक्त सन्दर्भमा उत्पन्न समस्याहरु आपसी सहमतिको आधारमा समाधान गर्न एवं आपसी सम्बन्ध सामान्यीकरण तथा मेलमिलाप गर्न अनुकुल वातावरण श्रृजना गर्ने कार्यमा सबै राजनितिक दलहरु, नागरिक समाज र स्थानीय संघ संस्थाहरु समेतको सहयोगमा व्यक्तिगत तथा सामुहिक रुपमा उत्तरदायित्व लिई कार्यान्वयन गर्न गराउन दुवै पक्ष सहमत छन् ।

५.२.१० दुवै पक्ष परिवारका कुनै सदस्य एक अर्का पक्षसँग सम्वद्ध भएका आधारमा परिवारका अन्य सदस्यहरुमाथि कुनै पनि विभेद नगर्न र कुनै पनि दवाव नदिन प्रतिबद्धता जाहेर गर्दछन् ।

५.२.११ नेपाल सरकार तथा सार्वजनिक निकायका कर्मचारीहरुलाई देशको कुनै पनि भागमा स्वतन्त्र रुपमा आवतजावत गर्न, आफ्नो कर्तव्य पालन गर्न तथा आफ्नो कार्यसम्पादनको क्रममा तिनीहरुलाई कुनै पनि किसिमको वाधा अवरोध खडा नगर्न र त्यस्तो अवरोध खडा हुन नदिन तथा उनीहरुको काममा सहयोग गर्न दुवै पक्ष सहमत छन् ।

५.२.१२ संयुक्त राष्ट्र संघ, अन्तर्राष्ट्रिय दातृ समुदाय लगायत नेपाल स्थित कूटनैतिक नियोग, राष्ट्रिय वा अन्तर्राष्ट्रिय गैर सरकारी संस्था, प्रेस, मानव अधिकारवादीहरु, निर्वाचन पर्यवेक्षक तथा विदेशी पर्यटकहरुलाई नेपाल राज्यभित्र कानुन बमोजिम निर्वाध आवत जावत गर्न दिने कुरामा दुवै पक्ष सहमत छन् ।

५.२.१३ दुवै पक्ष प्रचार-प्रसारका कार्यक्रमहरु शिष्ट र मर्यादित ढङ्गले संचालन गर्न प्रतिबद्ध छन् ।

## ६. युद्ध समाप्ति :

६.१ २०६३ कार्तिक २२ गते सात राजनीतिक दल र नेकपा (माओवादी) बीच सम्पन्न ऐतिहासिक सहमतिको आधारमा सरकार माओवादीबीच चालू युद्धविरामलाई स्थायी रुप दिदै २०५२ सालदेखि चलिआएको सशस्त्र युद्ध समाप्त भएको घोषणा गर्दछौं ।

६.२ सात दल र नेकपा (माओवादी) का शीर्ष नेताहरुको २०६३ साल कार्तिक २२ गतेको बैठकबाट भएका निर्णयहरु दीर्घकालीन शान्तिको लागि मूल नीतिगत आधार हुनेछन् ।

६.३ नेपाली सेना ब्यारेकमा र माओवादी सेनाका लडाकुहरु अस्थायी शिविरमा आइसकेपछि सहमति, सम्झौता र कानुन प्रतिकूल हतियार राख्न, प्रदर्शन, डरत्रास र कुनै पनि रुपमा हिंसा र हतियारको प्रयोग गर्न कानूनतः दण्डनीय हुनेछ ।

६.४ दुवै पक्षका सेनाले कसैको पक्ष वा विपक्षमा प्रचार प्रसार गर्न र पक्ष विपक्षमा लाग्न पाउने छैनन् । तर उनीहरुलाई मताधिकारबाट वञ्चित गरिनेछैन ।

७. **मानव अधिकार, मौलिक अधिकार र मानवीय कानूनको परिपालना** : मानव अधिकारको विश्वव्यापी घोषणापत्र, १९४८ तथा अन्तर्राष्ट्रिय मानवीय कानून र मानव अधिकार सम्बन्धी आधारभूत सिद्धान्त र मान्यताहरुप्रति प्रतिवद्ध रहँदै दुवै पक्ष देहायका विषयहरुमा आफ्नो सहमति जनाउँछन् :

७.१ मानव अधिकार :

७.१.१ दुवै पक्षले मानव अधिकारप्रतिको सम्मान र संरक्षण तथा अन्तर्राष्ट्रिय मानवीय कानूनप्रतिको प्रतिवद्धताको पुनःपुष्टि गर्दछन् र कुनै पनि व्यक्ति उपर वर्ण, लिङ्ग, भाषा, धर्म, उमेर, जात जाति, राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति, अपाङ्गता, जन्म र अन्य हैसियत, विचार वा आस्थाको आधारमा भेदभाव हुनु हुँदैन भन्ने कुरालाई स्वीकार गर्दछन् ।

७.१.२ दुवै पक्ष नेपाली जनताको नागरिक, राजनैतिक, आर्थिक, सामाजिक र सांस्कृतिक अधिकारको उपभोग गर्ने वातावरण सिर्जना गर्न सहमत छन् र भविष्यमा कुनै पनि अवस्थामा यस्ता अधिकार हनन नहुने वातावरण बनाउन प्रतिवद्ध छन् ।

७.१.३ दुवै पक्ष सम्झौता पत्रमा उल्लेख भएका अधिकारको उपभोगमा बाधा पुऱ्याउने जिम्मेवार व्यक्तिहरु माथि कानुन अनुसार निष्पक्ष छानवीन तथा कारवाही हुनेछ भनी प्रतिवद्धता जाहेर गर्दछन् र दण्डहिनतालाई प्रश्रय नदिने सुनिश्चितता प्रदान गर्दछन् । यसका साथै द्वन्द्व र यातना पीडित तथा वेपत्ता पारिएकाहरुको परिवारको राहत प्राप्त गर्ने अधिकारलाई समेत सुनिश्चित गर्दछन् ।

७.१.४ दुवै पक्षले सर्वसाधारणलाई यातना दिने, अपहरण गर्ने, जबरजस्ती कुनै काममा लगाउने काम गर्ने छैनन् र त्यस्ता कार्यलाई निरुत्साहित गर्न आवश्यक कारबाही समेत गर्नेछन् ।

७.१.५ दुवै पक्षले धर्म निरपेक्षताको मूल्य मान्यताका आधारमा कुनै पनि सामाजिक, सांस्कृतिक, धार्मिक संवेदनशीलता, धार्मिक स्थल र व्यक्तिको धार्मिक आस्थाको सम्मान गर्नेछन् ।

७.२ <u>बाँच्न पाउने अधिकार</u> :

७.२.१. दुवै पक्षले व्यक्तिको बाँच्न पाउने आधारभूत अधिकारको सम्मान र संरक्षण गर्दछन् । कसैलाई पनि यो आधारभूत अधिकारबाट वञ्चित गरिने छैन तथा मृत्युदण्ड दिइने गरी कुनै पनि कानुन बनाइने छैन ।

७.३ <u>वैयक्तिक मर्यादा, स्वतन्त्रता र आवतजावतको अधिकार</u>

७.३.१. दुवै पक्षले वैयक्तिक मर्यादाको अधिकारको सम्मान र रक्षा गर्दछन् । यस सिलसिलामा कानून बमोजिम स्वतन्त्रताको उपभोग गर्नबाट वञ्चित व्यक्ति लगायत कोही पनि यातना वा अन्य क्रुर, अमानवीय वा अपमानजनक व्यवहार वा सजायका पात्र हुने छैनन् । कानुनतः नागरिकको गोपनीयताको अधिकारलाई सम्मान गरिनेछ ।

७.३.२. दुवै पक्षले व्यक्तिको स्वतन्त्रता र सुरक्षाको अधिकारको पूर्ण सम्मान गर्दै कसैलाई पनि स्वेच्छाचारी वा गैरकानूनी थुनामा राख्ने, अपहरण गर्ने वा बन्धक बनाउने छैनन् । दुवै पक्षले बेपत्ता पारेका र कब्जामा राखेका प्रत्येक व्यक्तिको अवस्था सार्वजनिक गर्न र तिनीहरुका परिवारजन, कानूनी सल्लाहकार र अन्य आधिकारिक व्यक्तिलाई यससंग सम्बन्धित जानकारी दिन सहमत छन् ।

७.३.३ दुवै पक्षले प्रत्येक नागरिकको स्वतन्त्रतापूर्वक आवतजावत गर्न पाउने अधिकार तथा आफ्नो बसोबासको स्थान कानुनी मर्यादामा रही छान्ने स्वतन्त्रतालाई सम्मान तथा संरक्षण गर्दै द्वन्द्वबाट विस्थापित भएका व्यक्ति र निजका परिवारहरु आफ्नो मूल बासस्थानमा फर्कन पाउने वा तिनीहरुले चाहे अनुसार अन्य कुनै ठाउँमा बसोबास गर्न पाउने अधिकारको सम्मान गर्ने प्रतिवद्धता व्यक्त गर्दछन् ।

७.४ <u>नागरिक तथा राजनीतिक अधिकार</u>

७.४.१ दुवै पक्ष प्रत्येक व्यक्तिको विचार, अभिव्यक्ति, संघसंस्था खोल्ने तथा शान्तिपूर्वक भेला हुने स्वतन्त्रता तथा शोषण विरुद्धको हकको सम्मान र संरक्षण गर्न प्रतिवद्ध छन् ।

७.४.२ दुवै पक्ष प्रत्येक नागरिकलाई प्रत्यक्ष वा आफूले इच्छाएको प्रतिनिधि मार्फत् सार्वजनिक सरोकारको विषयमा भाग लिने, मतदान गर्ने, निर्वाचित हुने र सार्वजनिक सेवामा प्रवेशको समानताको अधिकारको सम्मान गर्दछन् ।

७.४.३ दुवै पक्ष व्यक्तिको सुसूचित हुने अधिकारको सम्मान गर्न प्रतिवद्ध छन् ।

७.५ आर्थिक- सामाजिक अधिकार

७.५.१ व्यक्तिले स्वतन्त्ररुपले छानेको वा स्वीकारेको रोजगारी गरी जीवन यापन गर्ने अधिकारको सम्मान तथा संरक्षण गर्न दुवै पक्ष प्रतिवद्ध छन् ।

७.५.२. दुवै पक्ष सबै जनताको खाद्य सुरक्षा सम्बन्धी हकको सम्मान एवम् प्रत्याभूति गर्न प्रतिवद्ध छन् । खाद्यवस्तु, खाद्य उत्पादन, खाद्यान्नको प्रयोग, ओसारपसार तथा वितरण कार्यमा कुनै हस्तक्षेप नगरिने सुनिश्चितता गर्दछन् ।

७.५.३ दुवै पक्ष नागरिकको स्वास्थ्यसम्बन्धी हकको सम्मान र संरक्षण गर्नुपर्छ भन्ने कुरालाई आत्मसात गर्दछन् । दुवै पक्षले औषधिको आपूर्ति, सहायता एवम् स्वास्थ्यसम्बन्धी अभियानमा वाधा पुऱ्याउने छैनन् र द्वन्द्वको कारणबाट घाइते भएकाहरुको औषधि उपचार गर्न एवं पुर्नस्थापनाको कार्य गर्न प्रतिवद्धता व्यक्त गर्दछन् ।

७.५.४ दुवै पक्षले सबैलाई शिक्षासम्बन्धी अधिकारको प्रत्याभूति र सम्मान गर्नुपर्छ भन्ने कुरालाई आत्मसात गर्दै शिक्षण संस्थामा उपयुक्त शैक्षिक वातावरण कायम गर्न प्रतिवद्ध छन् । दुवै पक्ष शिक्षासम्बन्धी हकको उल्लंघन नहुने कुराको सुनिश्चितता गर्न सहमत छन् । शिक्षण संस्थालाई कब्जामा लिने एवम् प्रयोग गर्ने र शिक्षक विद्यार्थीहरुलाई बेपत्ता पार्ने वा कब्जा वा अपहरण गर्ने कार्य तत्काल रोक्न र विद्यालय तथा अस्पताललाई असर पार्ने गरी सैन्य व्यारेक नराख्न सहमति व्यक्त गर्दछन् ।

७.५.५ कानून बमोजिम बाहेक कसैको पनि व्यक्तिगत सम्पत्ति जफत वा कब्जा गरिने छैन भन्ने कुरामा दुवै पक्ष सहमति व्यक्त गर्दछन् ।

७.५.६ दुवै पक्ष मुलुकमा औद्योगिक वातावरणलाई नखल्वल्याई उत्पादन कार्यलाई निरन्तरता दिन, औद्योगिक प्रतिष्ठानमा सामूहिक सौदावाजीको हक एवं सामाजिक सुरक्षाको सम्मान गर्न, औद्योगिक प्रतिष्ठान र श्रमिकबीच कुनै समस्या उत्पन्न भएमा उनीहरुलाई शान्तिपूर्ण रुपमा समस्याको समाधान गर्न प्रेरित गर्ने कुरामा

विश्वास गर्दछन् र अन्तर्राष्ट्रिय श्रम संगठनले तय गरेको कामको अधिकारको सम्मान गर्दछन् ।

७.६ <u>महिला तथा बालबालिकाको अधिकार</u>

७.६.१ दुवै पक्ष महिला तथा बालबालिकाका अधिकारहरुको विशेष संरक्षण गर्न, कुनै पनि प्रकारको यौनजन्य शोषण तथा दुर्व्यवहार लगायत महिला तथा बालबालिका विरुद्ध हुने वालश्रम लगायतका सबै खाले हिंसात्मक कार्यहरुमाथि तत्काल रोक लगाउन र अठार वर्ष वा सोभन्दा मुनिका केटाकेटीहरुलाई कुनै पनि सैन्यबलमा समावेश वा उपयोग नगर्न पूर्ण रुपमा सहमत छन् । यसरी प्रभावित बालबालिकाहरु तुरुन्त उद्धार गरिने छन् र तिनीहरुको पुनर्स्थापनको लागि आवश्यक र यथोचित सहयोग प्रदान गरिनेछ ।

७.७. <u>वैयक्तिक स्वतन्त्रताको अधिकार</u>

७.७.१. दुवै पक्ष आस्था र विचारको स्वतन्त्रता, वाक तथा प्रकाशन स्वतन्त्रता, शान्तिपूर्वक र बिना हातहतियार भेला हुने स्वतन्त्रता, आवागमनको स्वतन्त्रता, आफूखुशी पेशा व्यवसाय गर्न, सम्पत्ति आर्जन र भोगचलन गर्ने स्वतन्त्रता, शान्तिपूर्ण राजनीतिक कृयाकलापमा सहभागी हुने स्वतन्त्रता, कानुनको नजरमा सबै समान हुने र सहिष्णुतापूर्ण न्याय व्यवस्था सञ्चालन गर्न गराउन सहमत छन् ।

८. **<u>मतभेद निरुपण तथा कार्यान्वयन संयन्त्र</u>** :

८.१ दुवै पक्ष विगतमा भए गरेका त्रुटिहरुलाई भविष्यमा नदोहोऱ्याउने र क्रमिक रुपमा सच्यांउदै लैजाने गरी वैयक्तिक एवम् सामुहिक रुपमा उत्तरदायी हुने सहमति प्रकट गर्दछन् ।

८.२ राष्ट्रिय शान्ति तथा पुनर्स्थापन आयोगले शान्ति अभियानलाई सफल बनाउन आवश्यकता अनुसार संयन्त्रहरुको निर्माण गर्न सक्नेछ। आयोगको गठन र कार्यविधि अन्तरिम मन्त्रिपरिषद्ले तय गरे बमोजिम हुनेछ ।

८.३ दुवै पक्ष वर्तमान र भविष्यमा हुन सक्ने सबै किसिमका पारस्परिक मतभेद वा समस्यालाई आपसी सम्वाद, समझदारी, सहमति तथा वार्ताको माध्यमबाट समाधान गर्न प्रतिबद्ध छन् ।

८.४ यो सम्झौता, अन्तरिम संविधान तथा सात दल एवं नेपाल सरकार र नेकपा (माओवादी) बीच भएका सबै निर्णय, सहमति र समझदारीहरु कार्यान्वयन गर्न अन्तरिम मन्त्रिपरिषद्ले राष्ट्रिय शान्ति तथा पुनर्स्थापन आयोग, सत्य निरुपण तथा मेलमिलाप आयोग, राज्यको पुनर्संरचना सम्बन्धी उच्चस्तरीय सुझाव आयोग लगायत आवश्यकता अनुसारका अन्य संयन्त्रहरुको गठन गर्ने र तिनीहरुको कार्यविधि निर्धारण गर्न सक्ने कुरामा दुवै पक्ष प्रतिबद्धता व्यक्त गर्दछन् ।

९. **<u>कार्यान्वयन तथा अनुगमन</u>** : यस सम्झौतामा उल्लेख गरिएका सहमतिको कार्यान्वयन तथा त्यसको अनुगमनको लागि निम्न व्यवस्था गर्न दुवै पक्ष सहमत भएका छन् -

९.१ दुवै पक्ष संयुक्त राष्ट्र संघीय मानव अधिकार उच्चायुक्तको नेपाल स्थित कार्यालयबाट यस सम्झौतामा उल्लेखित मानवअधिकार सम्बन्धी प्रावधानहरुको अनुगमनको कामलाई निरन्तरता दिन सहमत छन् ।

९.२ दुवै पक्ष संयुक्त राष्ट्र संघको नेपाल स्थित मिशनबाट पूर्व प्रेषित पाँच बुँदे पत्र र यस सम्झौतामा उल्लेख भए अनुसार सैन्य तथा हतियार व्यवस्थापनको अनुगमन गराउन सहमत छन् र त्यस कार्यमा सहयोग पुऱ्याउन प्रतिवद्धता व्यक्त गर्दछन् ।

९.३ दुवै पक्ष संयुक्त राष्ट्र संघबाट संविधान सभाको निर्वाचनको पर्यवेक्षण गराउन सहमत छन् ।

९.४ राष्ट्रिय मानव अधिकार आयोगले कानून बमोजिम निर्वाह गर्नु पर्ने दायित्वका साथै यस सम्झौतामा उल्लेख गरिएका मानव अधिकार अनुगमन सम्बन्धी कार्यहरु पनि सम्पादन गर्नेछ। आयोगले आफ्नो कार्य सम्पादन गर्ने क्रममा मानव अधिकार सम्बन्धी राष्ट्रिय तथा अन्तर्राष्ट्रिय संघसंस्थासँग आवश्यक समन्वय गरी सहयोग लिन सक्नेछ ।

९.५ माथि उल्लेखित सबै निकायले दिएका प्रतिवेदनहरु बुझ्न, अनुरोध गरेका सूचनाहरु उपलब्ध गराउन तथा तिनले दिएका सुझाव तथा सिफारिसहरुको कार्यान्वयन सहमति र छलफलको आधारमा गर्न दुवै पक्ष सहमत छन् ।

१०. **<u>विविध</u>** :

१०.१ कार्तिक २२ गतेको निर्णयको मर्म र शान्ति सम्झौताको भावना अनुरुप सरकार वा राज्य संयन्त्रका कुनै पनि क्षेत्रमा समानान्तर वा अन्य स्वरुपको संयन्त्र सञ्चालन नगर्न दुवै पक्ष सहमत छन् ।

१०.२ दुवै पक्ष प्रस्तुत सम्झौताको कार्यान्वयनका लागि आवश्यकतानुसार अन्य पूरक सहमतिहरुमा हस्ताक्षर गर्न मञ्जुर गर्दछन् ।

१०.३ दुवै पक्षको सहमतिबाट प्रस्तुत सम्झौतामा कुनै पनि समयमा संशोधन गर्न सकिने छ। संशोधन गर्न चाहेमा सो को लिखित सूचना अर्को पक्षलाई प्रदान गर्न दुवै पक्ष सहमत छन्। त्यसरी सूचना प्राप्त भएपछि दुवै पक्षको सहमतिबाट संशोधन गर्न सकिनेछ। त्यस्तो संशोधनले गर्ने व्यवस्था मान्यता प्राप्त न्यूनतम अन्तर्राष्ट्रिय मानव अधिकार, मानवीय कानूनको मापदण्ड तथा शान्ति स्थापनाको मूल मर्मभन्दा न्यून हुने छैन ।

१०.४ यो सम्झौताको कुनै व्याख्यामा कुनै विवाद उत्पन्न भएमा यो सम्झौताको प्रस्तावना र अनुसूचीमा सङ्लग्न दस्तावेजहरुका आधारमा दुवै पक्ष सम्मिलित संयुक्त संयन्त्रले व्याख्या गर्ने छ र यो व्याख्या अन्तिम हुनेछ।

१०.५ अन्तरिम व्यवस्थापिका -संसद गठन भए पछि यस सम्झौतामा उल्लेखित 'दुई पक्ष' को अवधारणा तथा स्थिति स्वतः समाप्त हुनेछ। यसपछि यस सम्झौतामा उल्लेखित सम्पूर्ण अभिभारा कार्यान्वयन गर्ने गराउने दायित्व अन्तरिम मन्त्रिपरिषद्ले व्यवस्था गरे बमोजिम हुनेछ। सम्झौताको पालना तथा कार्यान्वयनमा सहयोग पुऱ्याउनु सबै राजनीतिक दलहरुको कर्त्तव्य तथा जिम्मेवारी हुनेछ।

१०.६ सिङ्गो मुलुक संविधान सभाको निर्वाचनको मुख्य अभियानमा केन्द्रित भइरहेको बेला आफ्ना समस्या र मागहरुलाई संवाद र वार्ताको माध्यमबाट समाधान गर्न तथा संविधान सभाको निर्वाचन तथा शान्ति सुरक्षाको स्थितिलाई सहयोग पुऱ्याउन सबैमा हार्दिक अनुरोध गर्दछौं ।

१०.७ सशस्त्र द्वन्द्वलाई अन्त्य गर्दै संविधान सभाको निर्वाचनद्वारा नयाँ लोकतान्त्रिक नेपालको निर्माण तथा दिगो शान्ति स्थापनाको यो ऐतिहासिक अभियानमा सकृय सहभागिता जनाई सफल बनाउन नागरिक समाज, पेशागत समुदाय, जनवर्गीय सङ्गठनहरु, पत्रकार जगत, वुद्धिजीवीहरु र आम नेपाली जनसमुदायमा हार्दिक अपील गर्दछौं ।

१०.८ पूर्ण लोकतन्त्र र दिगो शान्ति स्थापनाको यो अभियानमा नेपाललाई सहयोग पुऱ्याउन सबै मित्र राष्ट्रहरु तथा संयुक्त राष्ट्र संघ लगायत अन्तर्राष्ट्रिय समुदायलाई हार्दिक आग्रह गर्दछौं ।

देश र जनताको भविष्यप्रतिको जिम्मेवारी बोध गर्दै र यस विस्तृत शान्ति सम्झौता प्रति पूर्ण प्रतिबद्ध हुंदै हामी-नेपाल सरकार र नेपाल कम्युनिष्ट पार्टी (माओवादी) का तर्फबाट हस्ताक्षर गरी यो विस्तृत शान्ति सम्झौता सार्वजनिक गर्दछौं ।

| | |
|---|---|
| प्रचण्ड | गिरिजा प्रसाद कोइराला |
| अध्यक्ष | प्रधानमन्त्री |
| नेपाल कम्युनिष्ट पार्टी (माओवादी) | नेपाल सरकार |

हस्ताक्षर मिति :- २०६३/८/५

# Agreement

# on Monitoring of the Management of Arms and Armies

# 8 December 2006

## Preamble

In keeping with the letters to the United Nations (UN) Secretary-General of 9 August and the Comprehensive Peace Accord of 21 November 2006;

Guaranteeing the fundamental right of the Nepali people to take part in the constituent assembly elections in a free and fair environment without fear;

Declaring the beginning of a new chapter of peaceful democratic interaction by ending the armed conflict taking place in the country since 1996, based on the Comprehensive Peace Accord between the two parties in order to accomplish, through the constituent assembly, certainty of sovereignty of the Nepali people, progressive political outlet, democratic restructuring of the state, and social-economic-cultural transformation; and,

Affirming the will to fully observe the terms of this bilateral agreement witnessed by the United Nations:

The parties agree to seek UN assistance in monitoring the management of the arms and armies of both sides by the deployment of qualified UN civilian personnel to monitor, according to international norms, the confinement of Maoist army combatants and their weapons within designated cantonment areas and monitor the Nepal Army (NA) to ensure that it remains in its barracks and its weapons are not used against any side.

### 1. Modalities of the Agreement

### 1.1 Principles

Neither of the parties shall engage in movement or redeployment of forces resulting in tactical or strategic advantage.

Any claims or reports of violations of this agreement will be reported to UN monitors, substantiated or not substantiated, and subsequently reported to the parties through the appropriate representative of the UN Mission in Nepal.

The security forces deployed by the interim government shall have authority to conduct routine patrol, explore in order to prevent illegal trafficking of the weapons, explosives or raw materials used in assembling weapons at the international border or custom points and seize them.

Both parties agree to allow the United Nations, international donor agencies and diplomatic missions based in Nepal, national and international non-governmental organizations, press, human rights activists, election observers and foreign tourists to travel unrestricted according to law in the state of Nepal. The parties will ensure the safety, security, freedom of movement and well-being of UN Mission and associated personnel, goods and services in all parts of Nepal.

The parties shall immediately take all necessary measures to cooperate with efforts aimed at controlling illicit trafficking of arms and the infiltration of armed groups.

Both parties fully agree to not include or use children who are 18 years old and under in the armed forces. Children thus affected would be immediately rescued and necessary and appropriate assistance will be provided for their rehabilitation.

## 1.2 Definitions

The following definitions are accepted:

(1) ***Cantonment* (*Maoist army*)** is a temporarily designated and clearly defined geographical area for encampment and provision of services for the Maoist combatant units including weapons, ammunition and equipment. The cantonments are provided for all echelons of the Maoist army.

(2) ***Barracking* (NA)** is the deployment of Nepal Army units to barracks, including weapons, ammunition and equipment. No units below a company level will be independently deployed unless for activities specified elsewhere in this agreement or otherwise mutually agreed by the parties.

(3) ***Secure arms storage areas*** are either military barracks with regular armoury stores used for storage of weapons, munitions and explosives, or storage containers established in special perimeters at cantonment sites controlled and guarded by the responsible unit.

(4) ***"The parties"*** refers to the party of Government of Nepal (including the Nepal Army) and the party of the Communist Party of Nepal (Maoist), (including the Maoist Army).

(5) ***UN Monitoring*** refers to all efforts by the United Nations Mission to determine relative compliance with the terms spelled out in this agreement and to report to all the parties and others concerned its findings.

(6) ***The Joint Monitoring Coordination Committee (JMCC)*** is the monitoring, reporting and coordinating body chaired by the UN with membership of the parties. The JMCC is responsible for supervising compliance by the parties with this agreement in accordance with provision 6.1 of this agreement.

(7) ***Joint Monitoring Teams* (JMTs)** are the bodies which will assist in monitoring the cessation of hostilities. The Joint Monitoring Teams will be active at the regional and local level and in mobile teams. Each team will be comprised of one UN monitor serving as team leader, one monitor from Nepal Army and one monitor from the Maoist Army. Joint Monitoring Teams will not be used for weapons storage inspections. Inspections at Maoist army cantonments will take place with a UN monitoring team and a representative of the Maoist army. Inspections at Nepal Army barracks

will take place with a UN monitoring team and a Nepal Army representative.

(8) ***Maoist army combatants:*** For purposes of this agreement this will include regular active duty members of the Maoist army who joined service before 25 May 2006, who are not minors and who are able to demonstrate their service, including by CPN (M) identity card and other means agreed by the parties.

## 1.3 Promotion

The parties shall promote awareness of this agreement, and adherence to its provisions, among their commanders, members and affiliated groups.

The parties, Government of Nepal, Nepal Army (NA), CPN (M) and the Maoist army, shall design, in cooperation with the UN Mission, an awareness programme to ensure that local communities and the parties' commanders, members and affiliated groups understand the mandate of the UN Mission and all of the obligations of the parties spelled out in this agreement. The information programmes shall include the use of meetings and print and electronic media in local languages.

## 1.4 Phases

This agreement shall come into force upon signing. Thereafter it shall be implemented in phases, as follows:

(1) Reporting and verification;

(2) Redeployment and concentration of forces;

(3) Maoist army cantonment, NA barracking and arms control; and,

(4) Full compliance with the agreement.

A full and practical timeline will be established by the parties for all of these activities to take place in consultation with the UN.

**2. Reporting and verification**

The parties will report detailed information about their troops and this information will be treated with appropriate confidentiality by the United Nations. The parties will provide maps and sketches showing current dispositions, including:

(1) Order of battle/military structure, organisation, deployment and number of troops;

(2) Minefields, landmines, unexploded ordnance, standard explosives, improvised explosive devices and exact location of such items;

(3) All necessary information about roads, tracks, trails and passages related to encampments;

(4) Information regarding armed or unarmed groups working along with the parties, the Nepal Army (NA) and the Maoist army, including their responsibilities; and,

(5) Other information required by the UN for proper monitoring of the disposition of arms and armies.

The UN Mission shall check this information immediately after monitors are deployed.

**3. Redeployment and concentration of forces**

Comprehensive plans, timelines and routes for the redeployment and concentration of forces will be provided by both the NA and Maoist army to the UN Mission.

The redeployment and concentration of all combatants in Nepal -- with the NA in barracks and the Maoist army moving in to cantonment sites -- shall be carried out in consultation with the UN. The redeployment and cantonment of forces will be monitored by the UN monitors after they are deployed.

Both sides express an understanding to create a record of government, public and private buildings, land and other properties and return them immediately.

The parties will withdraw all military and paramilitary checkpoints (unless explicitly permitted in this agreement) to promote and guarantee free movement and create an environment free of fear and intimidation.

The Nepal Police and Armed Police Force shall continue the task of maintaining law and order and conduct criminal investigations as per the spirit and sentiment of the *Jana Andolan* and peace accord as well as the prevailing law. Both parties agree not to operate parallel or other forms of mechanism in any areas of the state or state machinery as per the spirit of the decisions of November 8, 2006 and the essence of the peace accord. All sides agree to let employees of Nepal Government and public agencies travel freely to any part of the country, to fulfill their duties and not to create any obstacle or obstruction while executing their work or not to let obstructions to arise and to facilitate their work.

## 4. Maoist Army cantonment, barracking of the NA and arms control

### 4.1 Maoist army cantonment

In accordance with the commitment expressed in the letter sent to the United Nations, Maoist army combatants and their weapons shall be confined within designated cantonment areas. The cantonment shall be based on comprehensive planning and preparation before implementation. After the Maoist army combatants stay in the temporary cantonments, the Government of Nepal will provide food supplies and other necessary arrangements. When implemented, the comprehensive concept shall ensure good communications and proper logistics. UN monitors will have access to any and all cantonment sites for purposes of monitoring.

#### 4.1.1 Commanders' responsibilities

The normal Maoist army chain of command, control, communication and information will be utilised to control the Maoist army cantonment, using the normal Maoist army structure in administration of the sites.

There will be seven main cantonment sites and 21 satellite cantonment sites of three per main cantonment site. The satellite sites will be clustered no more

than two hours driving distance from the main sites unless otherwise agreed by the parties.

The designated seven main sites will be under command, control, communication and information of the Maoist army site commander and the satellite sites by the designated satellite commanders. The site commanders shall provide the following information in detail for each site to the UN Mission:

(1) Command structure for the unit and sub-units plotted on a map;

(2) Names of commanders down to company level;

(3) Communication system;

(4) Complete list of personnel;

(5) Complete list of weapons, i.e. types, numbers, serial number and calibre under storage at the main cantonment sites;

(6) Ammunition inventory type, lot number and amount; and,

(7) List of names for the site security guards detachment, and complete list of weapons and ammunition for the detachment (main and satellite cantonment levels).

**Site commanders' responsibilities include:**

(1) Camp security, including access control to the site;

(2) Ensuring the security, freedom of movement and well-being of UN Mission and associated personnel, goods and services;

(3) Providing information in cooperation with the UN Mission in accordance with Section 2;

(4) Maintenance of discipline, morale and normal training in the spirit of the Comprehensive Peace Accord, excluding live fire exercises;

(5) Daily routines and control of troops; and,

(6) Logistics and camp services (in cooperation with the Government of Nepal and other assisting agencies).

### 4.1.2 Weapons storage and control

The parties agree upon the safe storage of all Maoist army weapons and ammunition, in the seven main cantonment areas under UN monitoring, except as provided below for perimeter security purposes. Both sides shall assist each other to mark landmines and booby-traps used during the time of armed conflict by providing necessary information within 30 days and to defuse and remove/lift and destroy them within 60 days. All improvised explosive devices will be collected at designated sites a safe distance from the main cantonment areas. These sites shall be agreed by the parties to consultation with the UN Mission.Unsuitable devices will be destroyed immediately. Stable devices will be stored safely and under 24-hour armed guard provided for by the guard agreements cited below. The parties, in consultation with the UN, will determine a timeline and process for the later destruction of all improvised explosive devices. To ensure the safety of both monitors and Maoist army personnel, no improvised explosive devices or crude bombs will be brought inside the cantonment sites.

In the main cantonment sites the weapons and ammunition storage area will be secured by the following system:

(1) A solid fence will surround the specified area, including a gate with a lock. There will be signs on the fence clearly identifying the restricted area.

(2) The weapons storage depot will be composed of storage containers painted white and furnished with shelves for safe weapons storage and easy control, and with a complete inventory (weapon type, calibre and serial number).

(3) A single lock provided by the UN will secure each storage container. The key will be held by the designated main cantonment site commander. A 24-hour surveillance camera provided by the UN Mission will cover the storage site and will be monitored from the UN office in the cantonment

site. Floodlights will be switched on automatically during hours of darkness.

(4) The UN Mission will provide an inspection registration device mounted on each container door indicating when the storage container has been opened.

(5) An alarm system provided by the UN Mission will be connected to sirens in both the UN office and the camp commander's office. The system will be activated if the container door is opened without a "safe button" having been switched off in connection with regular inspections.

(6) UN monitors will carry out the inspections of the arms storage area and containers in the presence of a Maoist army representative.

Each main cantonment site will be allowed 30 weapons of the same make and model to be used only for clearly defined perimeter security by designated guards, with each satellite allowed 15 such weapons under the same conditions. These weapons will all be properly registered with make and serial number and locked in a guardhouse when not in use. The parties, in consultation with the UN, will periodically review the number of weapons needed for perimeter security purposes on the basis of a shared threat assessment.

Security provisions will be made for CPN(M) leaders through understanding with the government.

The UN Mission shall monitor these commitments with a full-time presence at the Maoist army main cantonment sites and through field visits and regular inspections. These inspections will be carried out randomly and without warning.

### 4.1.3 Registration of Maoist army combatants at cantonment sites

All Maoist army combatants will be registered at the main cantonment sites. This registration will include the provision of age, name, rank, responsibilities within unit/formation, date of entry into service and will provide the basis for a

complete list of personnel. Maoist combatants will be registered regardless if they are in possession of weapons or not. If with weapon, the type and condition of weapon will be specified. The total number of weapons will be categorized by unit/formation. Only those individuals who were members of the Maoist army before 25 May 2006 will be eligible for cantonment. The parties will agree as to how this pre-existing service is to be confirmed in consultation with the UN.

As part of this registration, all Maoist army combatants will present their Maoist army identity card to be marked by the UN. The process for marking the cards will be determined. This registration card will be the basis for any assistance received by Maoist army members. Unregistered persons will not be eligible for assistance or permitted to remain in cantonments.

Only those Maoist army combatants who have been properly registered at cantonment sites will be eligible for possible integration into the security forces fulfilling the standard norms. Any discharged personnel will be ineligible for possible integration. Those who are eligible for integration into the security forces will be determined by a special committee as agreed in the Comprehensive Peace Accord. This integration process will be determined in subsequent agreement with the parties.

Upon registration Maoist army combatants, if found to be born after 25 May 1988, will be honourably and automatically discharged.

Discharged Maoist army combatants must: release all weapons, uniforms and other military gear; and, agree not to return to cantonment sites unless mutually agreed by UN monitors in consultation with the parties. The assistance packages to be provided to voluntarily discharged personnel will be agreed by the parties in advance of cantonment.

The Interim Council of Ministers will form a special committee to supervise, integrate and rehabilitate the Maoist army combatants.

## 4.2 Barracking of the Nepal Army

### 4.2.1 General regulations

In accordance with the commitment expressed in the letter sent to the United Nations, the Nepal Army shall remain in its barracks and its arms are not to be used in favour of or against any side. UN monitors will have access to any and all NA barracks for purposes of monitoring whether Nepal Army forces or weapons are being used for or against any party. Upon visiting any Nepal Army barracks for inspection, the site commander will be duly notified, and UN inspections will relate only to matters regarding the disposition of forces and weapons.

The Council of Ministers will control, mobilise and manage the Nepal Army as per the Army Act of 2006 (Sainik Ain 2063) or its successor legislation. The Interim Council of Ministers to prepare and implement the detailed action plan of the Nepal Army's democratization by taking suggestions from the concerned committee of the Interim Parliament/legislature. Under this to carry out activities like assessing the appropriate number of the Nepal Army, to train the army in democratic and human rights values while developing democratic structure, national and inclusive character.

### 4.2.2 Commander responsibilities

The normal NA chain of command, control, communication and information will be utilised to monitor the NA deployment to barracks. The commanders shall provide the following information in detail to the UN Mission:

(1) Command structure for the unit and sub-units plotted on a map;

(2) Names of commanders down to company level;

(3) Communication system;

(4) Order of battle/military structure, organisation, deployment and number of troops;

(5) Minefields, landmines, unexploded ordnance, standard explosives, improvised explosive devices and exact location of such items; and,

(6) Other information required by the UN Mission for proper monitoring of the disposition of arms and armies.

The NA will ensure the safety, security, freedom of movement and well-being of UN Mission and associated personnel, goods and services, and provide information in cooperation with the UN Mission according to Section 2.

The UN Mission shall monitor these commitments through daily presence in selected NA barracks, field visits and regular inspections.

**4.2.3 Weapons storage and control**

The Nepal Army will remain within the barracks as per the commitment expressed in the letter sent to the UN to ensure that their arms are not used for or against any party. The Nepal Army to store arms in equal numbers to that of the Maoist army, to seal it with a single-lock and give the key to the concerned party. In the process of installing the lock, to assemble a mechanism including a siren and register for the monitoring by the UN. While carrying out the necessary examination of the stored arms, the UN will do so under the presence of a Nepal Army representative. The barrack/barracks where NA arms will be monitored under the conditions spelled out in section 4.1.2 will be identified and agreed by the parties. The arms will be stored in storage containers.

**4.2.4 Deployment and Concentration of Forces – NA permitted activities**

In accordance with the spirit of the Comprehensive Peace Accord, continuity will be given to functions of the Nepal Army including border security, security of the conservation areas, protected areas, banks, airports, power houses, telephone towers, central secretariat and security of VIPs. A detailed list of these institutions and installations will be kept by the Secretary, Ministry Defence, along with the number and types of forces assigned to such duties. The list of such institutions and installations will be kept by the NA under seal, and this list will be made available to UN monitors when they deemed necessary on a case-by-case basis.

**Permitted NA activities are as follows:**

1. Routine military activities within the barracks and regular training in barracks and camps. The JMCC will be notified 48 hours in advance before undertaking limited live fire exercises at designated live firing ranges.
2. Participation in official ceremonies, parades, etc. as directed by the Government.
3. Provision of Border Security as directed by the Government.
4. Relief of troops on a one-to-one basis, including transport as mentioned.
5. Regular maintenance and replacement of non-lethal equipment, including transport as mentioned. Maintenance and replacement of lethal weapons will take place only with the determination of the interim government or agreement by both parties.
6. Execution of development and construction tasks as directed by the civilian authorities, on central, regional and local levels.
7. Provision of support in relief work in times of natural and other disasters as directed by the Government.
8. Participation in Peacekeeping Operations called for by the United Nations, and all preparations, transport, training, transfer of equipment, etc. connected to this.
9. Provision of security for VVIPs and VIPs.
10. Provision of security of vital installations as directed by the Government.
11. Provision of security of transportation of Nepal Rastra Bank funds.

For all of the above activities the rules regarding notification of troop, air movements and exercises spelled out in section 5.2 apply.

## 5. Compliance with the Agreement

### 5.1 Prohibited Activities

In the spirit of the Comprehensive Peace Accord, and in light of this agreement, after the placement of the Nepal Army in the barracks and the Maoist Army combatants in cantonment, the parties shall scrupulously refrain from the following activities:

1. Holding and carrying arms is in violation of the law. Displaying arms, intimidation and any type of use of violence is prohibited, and use of arms is legally punishable.
2. Any type of arms and weapons targeted against each other in a direct or indirect way or any act of attack.
3. Harming or intimidating any person, including internally displaced persons, humanitarian and development workers and other non-combatants, and any seizure of their equipment and property.
4. Ambushes, murder or violent operations.
5. Kidnapping, unlawful detention or imprisonment, disappearances;
6. All offensive military flights in and over Nepal.
7. Damaging or seizing public/private/government, military or UN property and all attacks on UN and associated personnel.
8. Planting mines or improvised explosive devices, conducting sabotage or military espionage.
9. Recruiting additional armed forces or conducting military activities against each other, including transporting weapons, ammunitions and explosives (unless mutually agreed by the parties and notified in advance according to the terms of this agreement).
10. Collecting cash or goods and services or levying tax against one's wishes and against the existing law.

11. Any actions that impede or delay the provision of humanitarian assistance or protection to civilians.

12. Any restrictions on the safe, free and unimpeded movement of humanitarian or development agencies undertaking activities approved by the interim government or its successor.

13. All acts and forms of gender-based violence.

14. Any restrictions on the free movement of people and goods.

15. All activities that obstruct the efforts of the UN Mission and amount to a failure to cooperate with the UN Mission, including the prohibition of the UN Mission patrols and flights over any location.

16. Any attempt by a party to disguise its equipment, personnel or activities as those of the UN Mission, other United Nations agencies, the International Committee of the Red Cross/Crescent or any other similar organisation.

17. Any attempt to redeploy military forces and equipment or occupation of any positions out of their respective deployment positions without the consent of the Joint Monitoring Coordination Committee.

18. The use of children who are 18 years old and under in the armed forces.

19. All hostile propaganda and incitement to military action.

The parties shall also refrain from all activities that are prohibited elsewhere in this agreement.

**5.2 Permitted activities**

The key principle that shall underpin permitted activities for both sides shall be to alleviate the effects of the armed conflict on civilians and the war-affected areas and to galvanise popular support for peace. Permitted activities for both sides will be conducted as per the decisions of the interim government. Troop, air movements and exercises have to be properly notified and approved by the Joint Monitoring Coordination Committee at least 48-hours in advance.

**Permitted activities include:**

(1) De-mining and decommissioning of military hazards;

(2) Development activities to include improvement and opening of roads, rehabilitation of bridges and passages and airstrips according to the decisions of the interim government;

(3) Humanitarian relief;

(4) Socioeconomic activities such as assisting free movement of people, goods and services;

(5) Free movement of unarmed soldiers in plain civilian clothes who are on granted leave, medical referrals, or visiting families – no more than 12 percent of the total retained force at a given cantonment or barracks will be on authorised leave at any given time unless mutually agreed by the parties;

(6) Supply of non-lethal items to military units, food, water, medicine, petrol, oil and lubricants, stationary, uniforms etc; and,

(7) Medical evacuation.

**5.3 Violations**

The following acts shall constitute violations of the agreement:

(1) Any act that contravenes this agreement;

(2) Unauthorised troop movements;

(3) Unauthorised recruitment, conscription or mobilisation;

(4) Unauthorised replenishment of military equipment;

(5) Violation of human rights, humanitarian law or obstruction of freedom of movement of people, goods and services;

(6) Espionage, sabotage, air surveillance and acts of subversion; and,

(7) Military flights, or military flights utilising civilian aircraft, over cantonment sites without 48-hour notification to the parties and the UN Mission, except in emergency situations or medical evacuations.

**6. The United Nations Mission**

Monitoring of compliance with this agreement with be carried out:

(1) By UN Monitors; or,

(2) By Joint Monitoring Teams, if so decided by the JMCC and in keeping with other provisions of this agreement.

The UN Mission will submit reports to the parties on compliance with this agreement. It will do so either directly or through the JMCC.

**6.1 The Joint Monitoring Coordination Committee**

The nine-member Joint Monitoring Coordination Committee (JMCC) will have a chairman appointed by the UN Mission. There will be two Vice-Chairman, one each from the Maoist Army and the NA. The remaining six members will be two UN, two NA and two Maoist army, all as selected by the parties respectively.

The JMCC shall reach its decisions by consensus. In the event of a deadlock, the representative of the UN Secretary-General shall have final authority for reporting on the compliance of the parties with this agreement to the Secretary-General and to the interim government for resolution. The Chairman shall report regularly to the representative of the Secretary-General and to the designated representatives of the parties regarding the activities of the JMCC.

The JMCC shall serve three main functions:

(1) To assist the parties in implementing this agreement. The JMCC shall be the central coordinating body for monitoring arms and armies in accordance with the terms of this agreement and to approved, where appropriate those activities specified in section 5.2.

